# षडक्षरी लोकेश्वर

**- दयाराम श्रेष्ठ, लुभू**

## बुद्ध

बृहत नेपाली शब्दकोशका अनुसार 'बुद्ध' भन्नाले जान्ने-बुझ्ने; बुद्धिमान्; विद्वान, बिउँझेको; जाग्रत् व्यक्ति भनिएको छ । त्यस्तै नेपाल तराईको लुम्बिनीमा मायादेवीको गर्भबाट जन्मेका, शाक्यवंशज, बौद्ध धर्मका प्रवर्तक गौतम बुद्ध पनि भनेका छन् । उक्त पुस्तकका अनुसार एक महान पद बुद्ध बन्ने काम वा बुद्ध पद पनि भनिएको छ । वास्तवमा राग द्वेष र मोहलाई सदाको लागि त्याग गरी दु:खबाट पूर्ण रूपले मुक्त गर्न सक्ने त्यो महामानव नै बास्तवमा बुद्ध हो भन्न सकिन्छ । संस्कृत र पालि भाषाका ग्रन्थहरूका अनुसार त्यो व्यक्ति जसले निर्वाण प्राप्त गर्दछ जसले सदाको लागि लोभ, घृणालाई त्याग गर्न सक्दछ, दु:खबाट पूर्ण मुक्ति पाउदछ  यो नै सबै भन्दा उत्तम सुख हो ।

इन्टरनेटमा बुद्ध वारे खोज गर्दा - बुद्ध भन्नाले बोधि प्राप्त वा अन्तिम सत्यको साक्षात्कार गरेको महामानव बुझिन्छ । जो व्यक्ति आफ्नै प्रयाशले विना गुरू बुद्धत्व प्राप्त गर्दछन् र अरू प्राणीहरूलाई दु:ख निरोधको मार्गदेशना गर्दछन्, उनलाई **सम्यक सम्बुद्ध** भनिन्छ । भनिन्छ कि गौतम बुद्धभन्दा अघि अनेक सम्यक सम्बुद्धहरू उत्पन्न भैसके र भविष्यमा पनि अनेकौं सम्यक सम्बुद्धहरू उत्पन्न भई दु:ख निरोधको शिक्षा दिनेछन् ।[१] बुद्धको जन्म गौतम बुद्धको रूपमा ५४७ औं थियो ।[२]

---

[१] बुद्ध धर्म, http://ne.wikipedia.org/wiki/बौद्ध_धर्म, Nov 7, 013) ।

[२] जातक के हो, http://mahayanamantra.blogspot.com/2013/07/blog-post_24.html. यस साइटमा उल्लेख गरिए अनुसार - तीन असंख्य कल्प अघि सूमेद नामक ब्राहमणले दिपंकर बुद्धलाई भेटी 'म पनि तपाईं जस्तो बन्न चाहन्छु' भने । भनिन्छ सूमेद ब्राहमणले दिपंकर बुद्ध सामु उक्त संकल्प लिने बित्तिकै उनी बोधिसत्व भए । सूमेद ब्राहमण मृत्यु पश्चात पनि बोधीचित्त अभ्यासमा लीन नै रहे । हरेक जन्ममा उनले बोधीसत्व अभ्यासलाई कायमै राखे । महासत्व राजकुमारको रूपमा पनौतीमा जन्म लिएको बेला उनमा करूणाको मात्रा यति बढेको थियो कि भोकाएकी बघिनीलाई देखेर आफ्नै शरिरलाई काटेर समेत खिलाएका थिए । त्यसपछि उनको जन्म तुषित नामक देवलोकमा भयो । त्यसपछि लुम्बिनीमा सिद्धार्थको रूपमा उनको जन्म भयो । यो उनको ५४७ औं जन्म थियो । पाली त्रिपिटकहरूमा यी ५४७ वटै जन्महरूका विवरण पाउन सकिन्छ । जातक कथाहरूमा यिनका सबै जन्मका, सूमेद ब्राहमण देखि लिएर तुषित सम्मका कथाहरू लेखिएका छन् । यी ५४७ जन्महरू मध्येका ३४ वटा जन्मका कथाहरूलाई समेटेर अश्वघोष नामक महाकवीले जातकमाला लेख्नु भयो । नेपालमा पाइने पौवा, थांकाहरू जातकमाला पुस्तकका कथाहरूमा आधारित छन् । जातकमालाको आधारमा बुद्धका पछिल्ला जन्मका कहानीहरूलाई चित्रांकन गरिएको हुन्छ । सिद्धार्थका कथा चाहिं जातकमा लेखिएको छैन किनभने त्यो नै उनको अन्तिम जन्म थियो ।  यसरी दिपंकर बुद्धको चेला, तीन असंख्य कल्पहरू पछि सिद्धार्थ भए । सूमेद ब्राहमण देखि सिद्धार्थ सम्मको जति जन्महरू भए, ती जन्महरूका कहानी नै जातक हो ।

**बुद्धधर्म**

बुद्धदर्शनका अनुसार बुद्धको सिद्धान्तमा अडिग भएर लाग्नु बुद्धधर्ममा लाग्नु हो । बुद्धधर्मका अनुयायीहरूले त्यसमा व्याख्या गरेअनुसार विभिन्न सामाजिक आर्थिक राजनीतिक अवस्थाको सृजना गरिएको हुन्छ । सिद्धार्थ गौतम बुद्धले चलाएको धर्म नै बुद्धधर्म हो भनेर हाल जनमानसमा बढी प्रभावित भएको हामी पाउँछौं । बुद्ध, बुद्धदर्शन र बुद्धधर्म सम्बन्धमा विविध प्रकारका सामाग्रीहरू अध्ययन गर्दा शाक्यमुनि बुद्धको जन्म भन्दा अघि नै बुद्ध, बुद्ध दर्शन र बुद्धधर्म भन्ने रहेको देखिन्छ । डा.रञ्जना बज्राचार्यको *नेवार बौद्ध संस्कार* भन्ने पुस्तकमा उल्लेख भएअनुसार - “नेपालको तराइ क्षेत्रमा स्थापित अशोक स्तम्भहरूका आधारमा ककुच्छन्द बुद्ध, कनकमुनि बुद्ध र गौतम बुद्धको जन्म भूमि नेपालमै भएको कुरा सिद्ध भइसकेको छ । साथै प्राग ऐतिहासिक कालदेखि नै नेपालमा बुद्धधर्म प्रचलित भइसकेको कुरा पनि देखिन आउँछ । नेपाल मण्डलमा श्रीस्वयम्भू महाचैत्यको प्रतिस्थापन र समय समयमा अनेक बुद्ध, तथागत(सप्त तथागत), बोधिसत्व(मञ्जुश्री), सिद्ध, योगीहरूको आगमनले गर्दा यहाँ गौतम बुद्ध भन्दा अगाडि देखि नै बुद्धधर्म विद्यमान भएको कुरा मान्न सकिन्छ” ।[३] पञ्च या षष्ठ ध्यानी बुद्ध र तिनकी शक्ति तथा पुत्ररत्न स्वरूप बोधिसत्वका नामहरू[४]

| **क.सं.** | **बुद्धनाम** | **शक्ति** | **बोधिसत्व** |
|---|---|---|---|
| १ | वैरोचन | वज्रधातीश्वरी | समन्तभद्र |
| २ | अक्षोभ्य | लोचनी | वज्रपाणि |
| ३ | रत्नसम्भव | मामकी | रत्नपाणि |
| ४ | अमिताभ | पाण्डुरा | पद्मपाणि |
| ५ | अमोघसिद्धि | आर्यतारा | विश्वपाणि |
| ६ | वज्रसत्व | वज्रसत्वात्मिका | घण्टामणि |

(स्रोत : *डि इन्डियन बुद्धिस्ट आइकोनोग्राफी* - विनयतोष भट्टाचार्य )

[३] रञ्जना बज्राचार्य, *नेवार बौद्ध संस्कार*, कीर्तिपुर : त्रिभुवन विश्वविद्यालय, नेपाल र एशियाली अनुसन्धान केन्द्र, वि.सं.२०६५, पृ.१ ।

[४] विनयतोष भट्टाचार्य, *डि ईण्डियन बुद्धिष्ट आइकोनोग्राफि,* (The Indian Budhist Iconography, भारतीय बौद्ध मूर्तिकला), कलकत्ता : फर्मा के.एल.मुखोपाध्याय, सन् १९५८, पृ. ४२ - ४८ ।

सप्त या नवमानव बुद्ध, तिनकी शक्ति(तारा) औं बोधिसत्व नाम[५] -

| **क.सं.** | **बुद्धनाम** | **शक्ति** | **बोधिसत्व** |
|---|---|---|---|
| १ | विपश्वी | विपश्यन्ती | महामति |
| २ | शिखी | शिखामालिनी | रत्नधर |
| ३ | विश्वंभू | विश्वधारा | आकाशगञ्ज |
| ४ | कक्रुच्छन्द | ककद्युती | शकमंगल |
| ५ | कनकमुनि | कंठमालिनी | कनकराज |
| ६ | कश्यप | महीधरा | धर्मधर |
| ७ | शाक्यसिंह | यशोधरा | आनन्द |
| ८ | दीपशंकर बुद्ध | - | - |
| ९ | रत्नगर्भ बुद्ध | - | - |

( श्रोत : *डि इन्डियन बुद्धिस्ट आइकोनोग्राफी* - विनयतोष भट्टाचार्य )

लुम्वीनीमा रहेको अशोककालिन स्तम्भमा रहेको अभिलेखको अनुवादबारेको केही भ्रमबारेमा थप सूचना स्पष्ट गरी श्याम सुन्दर राजवंशीले यसरी भावार्थ खुलाउनु भएको छ । -

“देवताहरूका प्रिय प्रियदर्शी राजा (सम्राट अशोक)ले आफ्नो राज्याभिषेकको २०औं वर्षमा यहाँ आएर पूजा दर्शन गरे । यहाँ शाक्यमुनि बुद्धको जन्म भएको थियो । उनै बुद्धको जन्मशिला रहेको स्मारकको जीर्णोद्धार गरिदिए, शिला पनि खडा गराइदिए ।

यहाँ भगवानको जन्म भएको हुनाले पवित्र तीर्थस्थल कायम राख्न लुम्बिनी गाउँमा वन फडानी गराइदिए । त्यो फडानी आठ भाग( आठ बिघा) सम्म मात्र हो ।”[६]

---

[५] भट्टाचार्य, पूर्ववत् (पा.टि. नं. ५), पृ. ६८ - ७९ ।

[६] श्याम सुन्दर राजवंशी, “लुम्विनीस्थित अशोक स्तम्भ अभिलेख”, *प्राचीन नेपाल,* अंक १७३, वि.सं. २०३०, पृ.  ।

भगवान् बुद्धको परिनिर्वाणको एक शताव्दी पश्चात् वैशालीमा सम्पन्न भएको वौद्धहरूको द्वितीय सँगीतिमै पारस्परिक मतभेदका कारण तिनीहरू महासांघिक र स्थविरवाद(थेरवाद) नामक दुई सम्प्रदायमा विभक्त भएका थिए ।

**महायान**

बुद्धको महापरिनिर्वाण भएको धेरै वर्षपछि बुद्धधर्मका अनुयायी एवं प्रचारक महाराज अशोकको समयमा मूर्ति बनाएर पूजा गर्ने कार्यको शुरूआत भएको थियो । ईस्वीको पाँचौ/छैठौं शताव्दीतिर आदिबुद्ध मान्न थालिएको थियो । एक कालमा अनेकौं बुद्धहरू हुने भएता पनि एकलोकमा एक मात्र बुद्ध हुनुपर्छ भन्ने धारणा थियो । यसले गर्दा मानुषी बुद्धको संख्या सातबाट बढेर २४ सम्म पुगेको थियो । जापानको एक बौद्ध मन्दिरमा प्राप्त ग्रन्थ सुखावती व्यूहमा नाम-जप, नाम-घोष, नाम-संकीर्तन आदिबारे उल्लेख गरिएको पाइन्छ । यसैलाई महायानको पृष्ठभूमि मान्न सकिन्छ । महासाङ्घिक यानले बुद्धलाई लोकोत्तर वा दुःख कष्ट नहुने अलौकिक स्वरूप(ईश्वर)को रूपमा स्वीकारिएको कुरा 'महावस्तु' ग्रन्थमा उल्लेख गरिएको छ । भगवान बुद्धमा जीवलाई परेको दुःख प्रति दया जागेको र सहानुभूतिस्वरूप महाकरूणा जगाई उहाँले धर्मोपदेश गर्न शुरू गर्नुभएको हो । चरिया पिटकमा बुद्धको पूर्वजन्मको बारेमा व्याख्या गरिएको छ ।[७] नरेन्द्रदेव आचार्यले आफ्नो पुस्तकमा महायानलाई यसरी परिभाषित गर्नुभएको छ -

> "अर्हतबाट बोधिसत्वमा विकास भएको, अष्टाङ्गिक मार्गको आधार बनाएर बोधिसत्व एक आदर्श मार्गको रूपमा स्थापित हुन गयो किनकि भगवान् बुद्ध आफूले बुद्धत्व प्राप्त गर्नुपूर्व सम्म बोधिसत्व थियो । सम्यक् ज्ञान प्राप्त गर्न चाहने नै बोधिसत्व हो जसले सम्यक् ज्ञान प्राप्त गर्दछ उसैको चित्तमा जीवलोक प्रति करूणा प्रादुर्भाव हुन सक्छ यही नवीन धर्मको नाम नै महायान हो ।"[८]

महायानको अर्थ उत्तम, प्रशस्त वा श्रेष्ठमार्ग हो । यसलाई बोधिसत्वयान वा अग्रयान पनि भनिन्छ । यसको उदय कनिष्कको समयमा भएको हो । यसमा उदारता, परोपकार, सदाचार आदि तत्वहरूको प्रधानता हुन्छ । यसको पर्यायवाची शब्द त्रियान सूची र बौद्ध सम्प्रदाय सूची हो ।[९]

---

[७] नरेन्द्रदेव आचार्य, *बौद्धधर्म-दर्शन,* पटना : बिहार राष्ट्रभाषा परिषद, ई.सं. १९५६ पृ. १०४ - १०६ ।

[८] उही ।

[९] नयनाथ पौडेल(सं.), *भाषा वंसावली भाग १,* काठमाण्डौं : नेपाल सरकार, पुरातत्व विभाग, वि.सं.२०२०, पृ. ५६ ।

भगवान् बुद्धको निर्वाण भएको १०० वर्षपछि बुद्धधर्मका अनुयायीहरूका बीच मतभेद भएर वैशालीमा भएको दोस्रो बौद्ध सङ्गीतिमा थेर भिक्षुहरूले आफ्नो भिन्न मत राख्नेलाई निकाला गरेपछि उनीहरूले आफ्ना अलग धारणा बनाएर महासाङ्घिक बने र निकाला गर्नेहरू हीनसाङ्घिक नामले चिनिनथाले । पछि गएर यी दुबै सांघिकहरू महायान र हीनयानको नामले प्रख्यात भए ।

बुद्ध दर्शन अनित्य, अनात्म र दुःख गरी तीन मूल सिद्धान्तमा आधारित छन् । यसलाई त्रिलक्षण पनि भनिन्छ । -

क) अनित्य अर्थात सवै पदार्थ परिणामी एवं विनाशशील हो ।

ख) दुःख अर्थात् सवै पदार्थ अन्ततोगत्वा दुःखको स्वरूप हो । अंगुत्तर निकाय र पालि साहित्यमा उल्लेख भए अनुसार *सब्बे भब्बा दुख्खा अनिच्चा विपरणामधम्मा* अर्थात सम्पूर्ण संसार अनित्य दुःखस्वरूप एवं विपरीत परिणामयुक्त हो । र

ग) तेस्रो अनात्म अर्थात आत्माको अस्तित्व छैन ।

यसका मूल तीन तत्व -

**१. चार आर्य सत्य-**

क) जीवन दुःखमय छ ।

ख) दुःखका कारणहरू छन् ।

ग) दुःखलाई निरोध गर्न सकिन्छ ।

घ) दुःख निरोध गर्ने उपायहरू छन् ।

**२. पञ्चशील-**

पञ्चशील भन्नाले अहिंसा, सत्यबोल्नु, चोरी र मद्यपान नगर्नू, ब्रम्हचर्यको पालना गर्नु हो । बुद्धधर्मका अनुयायीहरू बुद्ध एक मणि र पद्म समान अमूल्य एवं भगवान् अर्हत सम्यक सम्बुद्ध रूपमा स्वीकारेर प्रार्थना गरिएको हुन्छन् । त्यसैले बुद्धको शरणमा, धर्मको शरणमा र संघको शरणमा जान्छु भनेर पहिलो, दोस्रो र तेस्रो पटक गरी तिन पटक वाचन गर्दछन् । त्यसपछि यी पञ्चशीलको पालना गर्छु भनेर प्रतिबद्धता व्यक्त गर्दछन् । -

१. मैले प्राणीघात गर्ने कार्य छोड्ने शील राम्रो सँग पालना गरिरहेको छु ।

२. मैले नदिएसम्म लिने कार्य छोड्ने शील राम्रो सँग पालना गरिरहेको छु ।

३. मैले कामरागको विषयमा परपुरूष/परस्त्री गमन गर्ने काम छोड्ने शील राम्रो सँग पालना गरिरहेको छु ।

४. मैले झुठो बोल्ने बानी छोड्ने शील राम्रो सँग पालना गरिरहेको छु ।

५. मैले बेहोशको कारण बनेको जाँड, रक्सी आदि लाग्ने पदार्थ पूर्ण रूपमा छोड्ने शील राम्रो सँग पालना गरिरहेको छु ।

**३. आर्य अष्टाङ्गिक मार्ग** -

अष्ट मार्गलाइ बुद्धधर्मको एक मार्गदर्शकको रूपमा लिइएको छ । यी निम्नानुसार छन् ।

क) सम्यक् दृष्टि र आर्य सत्य (राम्रो सँग बुझ्नु, ज्ञानप्राप्त गर्नु),

ख) सम्यक् संकल्प (राम्रो विचारहरूको मनन र राम्रो कार्यमा लाग्ने निश्चय गर्नु)

ग) सम्यक् वाक (सत्य र प्रिय वचन बोल्नु )

घ) सम्यक् कर्म (राम्रो कार्यमा लाग्नु)

ङ) सम्यक् आजीवन (सादा जीवन र न्यायीक मार्ग अवलम्वन गर्नु)

च) सम्यक् व्यायाम (सुस्वास्थ्य रहन प्रयत्न गर्नु)

छ) सम्यक् स्मृति (राम्रा कुराहरूको विचार गर्नु)

ज) सम्यक् समाधि (ध्यानद्वारा चित्त एकाग्र गर्नु)[१०]

**बोधिसत्व**

दशपारमिता पूर्ण पालन गर्ने वोधिसत्व बन्छ । दशवल(भूमि) प्राप्तगर्ने बोधिसत्व बुद्ध हुन्छ । बौद्ध धर्मावलम्वीहरू अष्टागिंक मार्गमा लागेर अज्ञान र दुःख मुक्ति गरेर निर्वाण प्राप्त गर्नेमार्ग तिर लागेका हुन्छन् ।[११] *बृहत नेपाली शव्दकोष* का अनुसार बोधिसत्व भन्नाले बुद्ध बन्ने अधिकारी भइसकेको तर बुद्धत्वप्राप्ति नभएको व्यक्ति जनाउंछ ।[१२] "बौद्ध धर्म र संस्कृति अनुरूप मनुष्य जीवनको मूल उद्देश्य नै बोधिसत्वको आदर्श प्राप्त गर्नु हो । संसारको कल्याणका लागि अर्काको दुःख आफ्नो ठानी सबैलाई करूणा राख्ने भावना महान तपस्वी बोधिसत्व हुनेले राखेको हुन्छ ।

[१०] इश्वरी विश्वकर्मा, saharanews.com.np/¿p=2150, सेप्टेम्वर, ई.सं. २०१६ ।

[११] बौद्ध धर्म, http://hi.wikipedia.org/wiki/ बौद्ध धर्म अगष्ट, २०१६ ।

[१२] बालकृष्ण पोखरेल (सं.), *बृहत नेपाली शब्दकोश,* काठमाण्डौं : नेपाल प्रज्ञाप्रतिष्ठान, वि.सं.२०४०), पृ. ९३० ।

**लोकेश्वर**

लोक र ईश्वरको सन्धिवाट लोकेश्वर बनेको छ । लोक भन्नाले आमजनता वा सर्वसाधारण आम मानिस भन्ने बुझिन्छ भने ईश्वर भन्नाले भगवान्, देवता भन्ने बुझिन्छ । लोकेश्वरको अर्थ लोकका स्वामी, परआत्मा, पर्यायवाची शव्द राजा[१३] लोकेश्वरलाई वृष्टि देवता, पानीको देवता, किसानको देवता, करूणामय, कर्मठ देवता, लोकेश्वर, मृगपाद, बोधिसत्व, आर्यावलोकितेश्वर, श्रीमद्लोकेश्वर, सूर्य आदि सहस्रनामले पुकार्दछन् । यसको महिमा मञ्जुश्रीले समेत पूरा गर्न नसकेको भनाइ छ ।

**अवलोकेश्वर**

अवलोकेश्वरलाई अवलोकितेश्वर वा लोकेश्वर भनिएको भएपनि अवलोकेश्वरवारे प्राप्त विवरण यहाँ प्रस्तुत खोजिएको छ । बज्रयानका नियम विपरीत गएको पापहरू हटेर मनमा करूणा र दयामाया पूर्ण भई चित्तोत्पाद भएर शून्यताको ज्ञानमा परिणत हुने शुभ अवसर पाउनेछ । छोटकरीमा भन्नुपर्दा अवलोकेश्वरलाई सदा प्रणाम गरेमा यसबाट मनका दुई क्लेश आवरण (श्लेशावरण र ज्ञयावरण) शुद्ध भई दशभूमि (मुदिता वा प्रमुदिता, विमला, प्रभाकरी, अर्चिष्मती, सुदुर्जया, अभिमुक्ति वा अभिमुखी, दूरङ्गमा, अचला, साधुमती र धर्ममेधा) र पञ्चमार्ग () पारगरी अवलोकेश्वरको भुवनमा अवलोकेश्वरसँग परिणत भई बुद्धत्वप्राप्त हुने शुभ अवसर पाउनेछ । अवलोकेश्वरका विभिन्न रूपहरू मध्ये एक प्रकारको अवलोकेश्वर यस प्रकारका छन् । एकमुख, चारहात, सेतो वर्णित शरीरमा पंचरंगको वस्त्रले अलंकृत गरेको चारहात मध्ये दुई हात वीचमा जोडेको अर्को दायाँ हातमा सेतो रत्नको माला बायाँ हातमा कमलको फूल समातेर पद्म र चन्द्रको आसनमा विराजमान गर्नुभएको छ । अरू पनि जम्मा ११ वटा मुख र हजारवटा हात भएका अवलोकेश्वरको रूप पनि छ । ११ मुख चाहिं १० भुमि पार गरी ११ औं बुद्धभुमिमा बस्नुभएको नमुना हो । एकहजार हात भएको चाहिं पृथ्वीलोकमा हजारचोटी धर्मराजको रूपमा जन्म लिएर प्राणीको हितगर्ने नमुना हो । हजार हातमा एक-एकवटा चक्क्षुभएको चाहिं लोकमा हजार पटक बुद्ध भई जन्मलिएर प्राणीको कल्याण गर्ने हुन् । त्यसकारण वहाँलाई ध्यान गरी

---

[१३] लोकेश्वर, http://shabdkosh.raftaar.in/Meaning-of-Lokesvar-in-Hindi, मिति उल्लेख नभएको ।

श्रद्धाभक्त शुद्धमनले *'ॐ मणि पद्मे हुँ'* भनी लाखौ पटक मन्त्र जप गरेमा त्यसको गुण र फल यति हो भनी अक्षरमा उतार्न सक्दैन ।[१४]

बोधिसत्वमा अवलोकितेश्वर वा पद्‌मपाणि अवलोकितेश्वरको विशेष मान छ । वर्तमान कल्प जसलाई भद्रकल्प भनिएको छ यसको खास सञ्चालक नै अवलोकितेश्वर हो । अव हुने मैत्रेयको उदय नभएसम्म अवलोकितेश्वर नै लोक संरक्षकको रूपमा रहेको छ । यसको संख्या धेरै भएपनि निम्न प्रसिद्ध छन् ।[१५]

यसमा क्रमानुसार

१. षडक्षरी लोकेश्वर
२. सिंहनाद लोकेश्वर
३. खसपर्ण लोकेश्वर
४. लोकनाथ लोकेश्वर
५. हलाहल लोकेश्वर
६. पद्मनतेश्वर लोकेश्वर
७. हरिहरिवाहनोद्‌भव लोकेश्वर
८. शैलोक्यवशंकर लोकेश्वर
९. रक्तलोकेश्वर लोकेश्वर
१०. मायाजालकर्म अवलोकितेश्वर,
११. नीलकण्ठ लोकेश्वर
१२. सुगतिसंदर्षण लोकेश्वर
१३. प्रेतसंतर्पित लोकेश्वर
१४. सुखावती लोकेश्वर र
१५. वज्रधर्म लोकेश्वर

[१४] http://www.hkudcbc.com/show.php¿sn=289&atsn=109 मिति १३, जनवरी, २०१४ ।

[१५] भट्टाचार्य, पूर्ववत (पा.टि.नं. ५), पृ. ३३ - ८० ।

**नेपाल मण्डलका मुख्य चार लोकेश्वरहरू**

नेपालमा परापूर्वकालदेखि मानेरआएको लोकेश्वरहरू मध्ये ४ वटा लोकेश्वरहरूका ( करूणामयहरू) निकै महत्वपूर्ण छन् ।

**१ अमरापुरी बुँगमदेश** ( ललितपुरका रक्तावलोकितेश्वर वा रातो मच्छेन्द्रनाथ वा लोकनाथ वा बुँगद्यः )

रक्तावलोकितेश्वर लोकनाथको वर्ण अरूणवर्ण छ । दुई ठूला ठूला आँखा छन् । दबिएको नाक, उचाइ चारफुट, पवित्र माटो (मृत्तिका, तेराकोटा) बाट बनेको मूर्ति सुन्दर र भव्य, शिरमा रत्नमुकुट, निधारमा टीका, कानमा रत्नजडित गहनाले सुसज्जित भएको, घाँटीमा कर्कोटक नागको रत्नमाला, हातमा चूरा, वाला र खुट्टामा कल्लीले सुशोभित, दाहिने हात वरद मुद्रा, बाँया हातमा कमलको फूल, ललितपुरको तःबहाल र बुङ्गमतीको उत्तर फर्केको मन्दिरमा विराजित, निरामिष, पञ्चामृतको पूजा मात्र हुने, अन्नदाता रूपमा मानिदै आएको छ । यसको मन्दिर बुङ्गमती र ललितपुरको तबहालमा रहेको छ । यो मुर्ति उतरायणमा ललितपुरमा र दक्षिणायनमा बुङ्गमतीको मन्दिरमा राखिने प्रचलन छ ।

**२ आनन्दादि लोकेश्वर** ( कच्छपाल पर्वतका आदिनाथ वा *चोभाःद्यः* )

तीन फुट ६ इञ्च उचाइ, दाहिने हात बरद मूद्रा, देब्रेहात आव्ह्वान मुद्रा, रक्तवर्ण, माथितिर हेरेको ठूला आँखा आदिनाथको नामले पुकारिने, स्वयम्भूको धर्माकरको रूपमा मानिएको यो मुर्ति कीर्तिपुरको चोभारमा रहेको छ ।

**३ सृष्टिकान्त लोकेश्वर** ( नालादेश (नालगिरी)का नाला करूणामय)

सेतो वर्ण, साना आँखा, पूर्वाभिमुख, एक हातले अभयवर मुद्रा, अर्को हातले कमलको फुल लिएको संसारको सृष्टि गर्ने स्त्री शक्तिको रूपमा मानेको यस लोकेश्वरले सृष्टिकर्ताको रूपमा एघार शिर धारण गरी चौध भुवनलाई केन्द्रित गरेका छन् । काभ्रेको नालामा यसको मन्दिर रहेको छ ।

**४ आर्यावलोकितेश्वर** ( काठमाण्डौको सेतो मच्छेन्द्रनाथ वा *जनबाःद्यः* )

जमलवाट ल्याएको हुनाले यसलाई नेपाल भाषावाट *जनवहाद्यः* (जनबहालमा रहेका देवता), श्वेतवर्ण भएकोले नेपालीमा सेतो मच्छिन्द्रनाथ, पुरानो कनकचैत्य महाबिहार भएको, प्राचीन समयमा कोलियग्राम जमलग्रन्थिबिहार भनिने, जमलेश्वर, आर्यावलोकितेश्वर, अमोघपाश लोकेश्वर, पूर्वाभिमुख, दाहिने हातले

अभय वरदान दिएको, बायाँ हातले कमलको फुल लिएको ध्यानमुद्रामा रही मर्त्यमण्डलमा हेरिरहेको, शिरमा अमिताभ बुद्धको मूर्ति रहेको, दायाँबायाँ दुईवटा स-साना हरिया आर्यतारा र रातो पद्मताराका मूर्तिहरू राखिएका छन् । यो किरातकालमा नै स्थापना भैसकेको अनुमान गरिएको छ ।

यी चार मध्ये सृष्टिकर्ता नालाको अन्नधन्न अनाजको व्यवस्था गर्न, वृष्टि गर्ने रक्तावलोकितेश्वर, ग्रह, दशा, भय, रोग विघ्न बाधावाट मुक्त गर्न आनन्दादि लोकेश्वर आदिनाथ, आयु साधना गरी आयुवृद्धि गर्ने आर्यावलोकितेश्वर सेतो मच्छेन्द्रनाथ लिइन्छ ।[१६] काठमाण्डौ उपत्यकाका विभिन्न चोक, बहाल र भजनघरहरू र अन्य धार्मिक स्थलहरूमा गरिने लोकनाथका भजनहरूमा लोकनाथको वर्णन र सृष्टिका कथा गासिएको छ । भजनको पूर्ण विवरण परिशिष्टको ६.२.२ मा दिइएको छ ।[१७]

नयनाथ पौडेलको भाषा वंशावली भाग दुईमा बन्देगाउँ भनेर एक देश बनाइ गोदावरी निकट एक पञ्चबौद्ध मूर्ति स्थापना गरी स्वयम्भू, खासा र धन्दो पछि षडक्षरी लोकेश्वर समेत नेपालमा बुद्धको मुर्तिहरू चार हुन गएको कुरा उल्लेख गरिएको छ ।[१८]

**षडक्षरी लोकेश्वर**

**१ षडक्षरी लोकेश्वरको स्वरूप**

षडक्षरी लोकेश्वरको वर्ण-सेतो, चर्तुभुजा, अञ्जली मुद्रा, स्फटिक माला र कमलको प्रतीक धारण गरेको, मणिधर र षडक्षरी महाविद्या साथमा रहने उल्लेख छ । साधनामालामा चार साधनाद्वारा पूजा गर्ने यो अवलोकितेश्वरको एउटा गणको तीन समूहमध्ये दुईवटाको वर्णन गरिएको छ । तेस्रोमा आफ्ना साथमा षडक्षरी महाविद्या र चौथोमा भगवान् आफै एक्लै हुनुहुन्छ । सवैमा लोकेश्वरको एउटै स्वरूप रहेको हुन्छ । पूजारीहरूले पनि आफै अनुमान गर्न सकिन्छ कि षडक्षरी लोकेश्वरको सजावट सवै प्रकारका गहनावाट गरिएको देख्न सकिन्छ । सेतो वर्ण, चतुर्भुजा, बायाँ हातमा कमल, दायाँ हातमा माला रहेको हुन्छ । छातीको अग्रभागमा अर्को दुईहात जोडेर अञ्जली मुद्रा रहेको हुन्छ । दायाँपट्टि मणिधरा सेतै वर्णमा र उही मुद्रा, अर्को कमलमा वसेको हुन्छ । बायाँपट्टी षडक्षरी महाविद्या कमलमा बिराजमान उही स्वरूप भएर परिचय दिएको हुन्छ । यस भगवान्को ध्यान कारण्डब्यूहमा उल्लेख गरेको पाइन्छ । यस स्वरूपको अवलोकितेश्वरलाई समर्पण गरिएको प्रख्यात र लोकप्रिय मन्त्र *'ॐ मणि पद्मे हुँ'* हुन् । यसमा छ वटा

---

[१६] बज्राचार्य पूर्ववत् (पा.टि.नं. ४९) पृ. ३ र ४ ।

[१७] उही पृ.६५-६७ ।

[१८] पौडेल पूर्ववत् (पा.टि.नं. २२), पृ. ५६ ।

अक्षर मिलेर षडक्षरी महाविद्याको स्वरूप जसलाई देवत्वको रूपमा पूजा गरिन्छ । नेपालका हरेक जसो बौद्ध मठमन्दिरहरूमा षडक्षरी लोकेश्वरको आकृति दुवै, एक्लै, र समूह सहितको प्रशस्त समावेश रहेको छ । साधनामालामा तीन देवताहरूको अर्को विकल्प पनि निर्धारण गरिएको छ । जसमा भनिएको कि कहिलेकाहिँ षडक्षरी महाविद्याको साधनामा लोकेश्वरले कमल, रत्नमणि र पुस्तक लिएको हुन्छ । मणिधरले रत्नमणि र कमल मात्र(पुस्तक बाहेक) धारण गरेको हुन्छ । षडक्षरीले पुस्तक र कमल (रत्नमणि बाहेक) धारण गरेको हुन्छ ।[१९]

## २ स्वयम्भू पुराणमा षडक्षरी लोकेश्वर

हेमराज शाक्यको श्री स्वयम्भू पुराणमा चार भगवान् बुद्धको बिशेष पूजा गर्ने *(प्यम्ह भगवान सिइकःवनेगु)* चलनमा *नेपालको प्रसिद्ध चार भगवान् बुद्ध-आदिबुद्ध श्री स्वयम्भू, नमःबुद्ध, खास्ति चीवाहा र* बाडेगाउँको *चीबहा* यी चार मध्ये सर्वश्रेष्ठ रूपमा मान्दै आएको श्रीस्वयम्भू महाचैत्य हो[२०] भनेका छन् ।

## ३ बुद्धधर्ममा षडक्षरी लोकेश्वरको स्थान

बौद्धहरूको आफ्नो देव परिवारको विभाजन वैज्ञानिक आधारमा गरिएको देखिन्छ । देववादको विकास ध्यानी बुद्धको आधारमा गरिएको थियो । यसमा वैरोचन, अक्षोभ, रत्न संभव, अमिताभ र अमोघ सिद्धि गरी पाँचवटा छन् । यसलाई “पञ्च बुद्ध” (वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघ सिद्धि)[२१] पनि भनिन्छ । कुनै कुनै ग्रन्थमा त वज्रसत्वलाई पनि छैठौं ध्यानी बुद्धको रूपमा लिएको देखिन्छ । ध्यानी बुद्धको उद्‌गम आदिबुद्धको पाँच स्कन्ध हो । *साधनमाला* पुस्तकका अनुसार ध्यानीबुद्धको स्वरूप समान छ, यसको वर्ण, मुद्रा आदिको आधारमा देखाएको हुन्छ । पूजाविधानमा वैरोचनलाइ छोडेर वाँकी चार स्तूपको चतुर्दिक स्थापित गरेर पूजा गरेको हुन्छ । वैरोचनको स्थिति मध्यभागमा रहेको हुन्छ । यसको कहिले कहिले पृथक रूपमा पूजा पनि गरिएको हुन्छ । ध्यानी बुद्धको पाँच सहचारी पनि हुन्छ जसलाई बुद्धशक्ति वा

---

[१९] भट्टाचार्य, पूर्ववत् (पा.टि.नं. ५), पृ. १२५ - १२७ । उक्त पुस्तकमा उल्लेख भए अनुसार - The Dhyana of this god has been extracted from the Karandavyuh aaccording to a statement in one of the colophons(footnote) of the Sadhanas,The Mantra assigned to this form of Avalokitesvara is the famous"Om Manipadme Hum" consisting of six syllables which are heredeified in the form of Sadaksari Mahavidya. When Lokesvara is associated with the Great Knowledge of the Six Syllables, he is called Sadaksari Lokesvara. Images of Sadaksari Lokesvara both singly as well as in groups abound in Nepal and almost every monastery in Nepal contains one or more images. A coloured image of this divinity appears inthe temple of Bodhnath a famous place of pilgrimage in Nepal. Another alternative is also prescribed in the Sadhanumala for allthe three deities, and the Sadhana adds : "Sometimes in the Sadhanaof Sadaksan Mahavidya, Lokesvara holds also the lotus bearing thejewel and the book, Manidhara may hold the jewel and the lotus butshould be without the book. Sadaksan may hold the book and thelotus but should not have the jewel.

[२०] हेमराज शाक्य, *श्रीस्वयम्भू महाचैत्य,* काठमाण्डौं : स्वयम्भू विकास मण्डल, ने.सं. १०९८, पृ ७९८ ।

[२१] उही, पृ ७६८ ।

प्रज्ञा(Consort) पनि भनिन्छ ती हुन् वज्रधात्वेश्वरी, लोचना, मामकी, पांडुरा र आर्यतारा हो । छैठौं ध्यानीबुद्धको शक्ति वज्रसत्वात्मिका माने पनि सवै बुद्धशक्तिको आ-आफ्नो ध्यानी बुद्धको रूप, गुण, आयुध, वाहन आदिको धारण गरेको हुन्छ । यसको प्रतिमा कमलासनमा बनाउने विधान र सामान्यतया यो चतुर्भुजी हुन्छ, हातमा कमल धारण गरेको र प्रभाहमण्डल(मुकुट)मा ध्यानी बुद्ध अंकित गरेको हुन्छ । यही ध्यानी बुद्धको आधारमा बोधिसत्वको पनि कल्पना गरेको छ जसको नाम समन्तभद्र, वज्रपाणि( अवलोकितेश्वर), विश्वपाणि र घण्टामणि हो । बुद्धत्व प्राप्त गर्ने उत्कट अभिलाषा राखेर मानवमात्रको कल्याण गर्ने प्रयत्न गरेकालाई "बोधिसत्व" भनेर भनिन्छ । ध्यानी बुद्ध र मानुषी बुद्धको सम्बन्ध यही हो भन्न नसकिएपनि मानुषी बुद्धको संख्या पनि सम्प्रदायभेद भन्दा फरक छ तर अन्तीम सात मानुषी बुद्ध बौद्ध देवपरिवारमा विशेष महत्व राख्दछन् । यसको बुद्ध शक्ति र वोधिसत्व हुन्छन् ।[२२]

प्रत्येक महिनाको प्रारम्भ दिन अर्थात संक्रान्तिको दिन करूणामयले एउटा एउटा अभिनवरूप धारण गरी भक्तजन उद्धारार्थ दर्शना दिने भएकोले संक्रान्तिको दिन करूणामय दर्शन गर्न जाने परम्परा चलेको देखिन्छ जस्मा पहिलो नम्वरमा षडक्षरी लोकेश्वरको दर्शन गरेर प्रारम्भ गरिने भनिएको छ ।[२३]

### षडक्षरी लोकेश्वर (बुधवाद्य:) जात्रा

बाडेगाउँको षडक्षरी लोकेश्वरको जात्रा देवताको मूर्तिलाई खटमा राखेर बाजागाजा सहित, भक्तजनहरू लहरै बसेर, सबै टोलहरूमा परिक्रमा गरेर, परिक्रमा गर्ने मार्गमा पर्ने मुख्य मुख्य देवीदेवताहरूलाई भोजका परिकारहरू र अन्य खाद्यवस्तुहरू चढाएर मनाउने जात्रा हो । चाडपर्वको विशेषताहरू पनि यस जात्रामा देखिन्छन् । प्रत्येक वर्ष भाद्रकृष्ण त्रयोदशीको दिनमा षडक्षरी लोकेश्वरको भव्य जात्राको आयोजना गरिन्छ । यस जात्रामा यस गाउँका सबै सम्प्रदाय, शाक्य, श्रेष्ठ, …जनजातिहरू, धिमे, धाँ, मुहाली, बासुरी, कनाथ, भजन आदि बाजाखलकहरू, गुठीहरू, नेपाल सरकार, स्थानीय सामाजिक संस्थाहरू, क्लवहरू, आमा, युवा, महिला, समहहरू, लगाईत अन्य छिमेकी गाउँका व्यक्तिहरूको संलग्नता रहेको हुन्छ । भाद्रकृष्ण त्रयोदशीको दिनमा यहाँ रहेका शिलाको षडक्षरी लोकेश्वर, धातुको षडक्षरी लोकेश्वर र अभिताभ बुद्धको पूजा भव्य रूपमा गरिन्छ । पूजा सकिएपछि अपरान्ह अभिताभ बुद्धको जात्रा गरी नगर परिक्रमा गरिन्छ । यस जात्रालाई बुधवाद्य: जात्रा वा स्थानीयहरूले दीपजात्रा जाने (*मतया वनेगु* ) भन्ने चलन छ । षडक्षरी लोकेश्वरको विभिन्न पूजाआजा, मेला, पर्व र अन्य जात्राहरू मध्ये मुख्य जात्रा प्रत्येक वर्ष भाद्र

---

[२२] बौद्ध देवी-देवता, https://hi.wikipedia.org/wiki/हिन्दू)देवी-देवता मिति २०७०।४।५ ।

[२३] हेमराज शाक्य, *ॐ मणि झे हूँ यसको अर्थ र महत्व सहित सक्षिप्त परिचय*, काठमाण्डौं : साङ्गेछ्योलिङ् गुम्वा, वि.सं. २०५६, पृ. झ ।

कृष्ण त्रयोदशी, जुगःको दिन बुधवा द्यःको (अभिताभ लोकेश्वर) जात्राको रूपमा मनाइने गरिन्छ । यो जात्रा भव्य रूपमा सबै गाउँवासीहरू सामेल भई मनाइने गर्दछ ।

**षडक्षरी लोकेश्वरको मेला**

**१ गुँला मेला :** श्रावण शुक्ल प्रतिपदादेखि भाद्र शुक्ल प्रतिपदा (*गुँलागा र गुँलाथ्व)* गुँला महिनाभरि एकमहिने मेला लाग्दछ । स्थानीय र वरिपरिका बुद्ध धर्मावलम्वीहरू बालक, वृद्ध, महिला, पुरूष सबै ऐच्छिक रूपमा दैनिक षडक्षरी लोकेश्वरलाई केन्द्रविन्दु मानेर बाडेगाउँका सबै बहालहरू परिक्रमा गर्दछन् । कुनै पनि मनले चिताएको इच्छा पुरा भइसकेको वा पुरा गराउन भनेर यस्तो परिक्रमा गरिने हुन्छ । खास गरी कुखुराको भाले बासे पछि, घरको छानामा भिंगटी वा टायलको धर्सो देखिनु अघि, काग कराउनु अघि, उज्यालो हुनुभन्दा पहिले उठेर नुहाइधुवाइ गरी, परिक्रमा गरी पूजा गरिन्छ । सके प्रत्येक दिन १०८ पटक परिक्रमा गर्ने नसके एक महिनाभरिमा १०८ पुऱ्याउने गरिन्छ । सो पुऱ्याउन नसक्नेले सकेजति मात्र पनि परिक्रमा गरिन्छ । परिक्रमा ( *द्यःउली* )मा गनेर भएमा १०८, नगन्दा जति पनि सके जति परिक्रमा गरिन्छ । यो सकेपछि मात्र *देखः चायकेगु* गरिन्छ । द्यः पालाले पूजा गर्ने समयमा पुरोहित वा मूल पूजारीले श्लोक भन्ने गरिन्छ ।

**२ प्रत्येक बुद्धवारको मेला :** यही महिनाभित्र पर्ने प्रत्येक बुधवार बिशेष मेला लाग्दछ । यस गाउँ वरिपरिका गाउँहरू लुभू, सानागाउँ, हरिसिद्धि, गोदावरी, गोदामचौर, चापागाउँ, धापाखेल, पाटन, भक्तपुर, ठिमी, नगदेश, बोडे, सतुंगल, पांगा, कीर्तिपुर, नगाउँ, थानकोट, नैकाप आदि उपत्यकाका विभिन्न स्थानहरूबाट आ-आफ्नो खेटमा भएको मकै, भटमास, मास, धान, गहुँ आदि चढाएर पूजा गरिन्छ । अन्य महिनाको प्रत्येक बुद्धवार शिलाको षडक्षरी लोकेश्वरलाई गहना लगाई पूजा गरिन्छ ।

**३ दीपयात्रा :** प्रत्येक भादकृष्ण द्वितीयाको दिन पाटनमा मनाइने दीपजात्रा ( *मतया/नेकुजात्रा) मा* सामेल हुने सबै भक्तजनहरू त्यस दिनको लगतैको बुधवारको दिनमा यस षडक्षरी लोकेश्वरको परिक्रमा गरी पूजा गरिन्छ । उक्त दीपयात्रा यस षडक्षरी लोकेश्वरको दर्शन गरेपछि मात्र पूरा हुन्छ भन्ने विश्वास गरिएको छ ।[२४]। बत्ती एक, १०८, ३६०, १००८, सवालाख बत्ती बाल्ने देवामा चिउरी, मैन, तेल, घ्यू, वनस्पति घ्यू पनि प्रयोग गरिएको हुन्छ । षडगतिमा परिरहेका मनुष्य पितृ आदिलाई उद्धार गर्न दीप यात्रा गर्ने गरिएको हो । त्यस्तै मुख्य अवसरका दिनहरू पारेर ती दिनहरूमा दिवंगत हुने

---

२४ रञ्जना बज्राचार्य, *अन्त्यष्टी संस्कार व दीप प्रज्वलनया परम्परा,* ललितपुर : पञ्चरत्न धाख्वा व राजेन्द्र धाख्वा, सम्वत् ने.सं.११३३, पृ. ११५ ।

आफ्ना परिवार जनको सम्झनामा विभिन्न मठ मन्दिरहरूमा दीप बत्ती बाल्न जाने क्रममा यस चैत्यमा पनि दीप प्रज्वलन गरिने प्रचलन रहेको छ ।

अपार संख्यामा धर्मावलम्बीहरूको सहभागिता हुने सो यात्रामा ललितपुर बाहेक बुंगमति, स्वयम्भू र बौद्धनाथको पनि परिक्रमा गर्नुको साथै बाडेगाउँमा रहेको षडक्षरी लोकेश्वरको पनि परिक्रमा पूजा गर्ने चलन रहेको छ । पाटनको शहरी क्षेत्रवाहेक अन्य क्षेत्रका लोकेश्वरहरूको परिक्रमा अनुकुल हुने गरी त्यस दिन बाहेक अर्को दिन गरिने प्रचलन रहेको छ । यसै शिलशिलामा पाटनमा मनाईने नेकुजात्रापछि आउने पहिलो बुधवारको दिन बाडे गाउँको षडक्षरी लोकेश्वरको परिक्रमा गरिने गरिन्छ । यस जात्रामा संलग्न हुने व्यक्तिहरूको कार्य षडक्षरी लोकेश्वरको दर्शन नगरिकन पुरा हुँदैन भन्ने भनाइ रहेको छ ।

(नोट : लेखक “बन्देपुर (बाडेगाउँ)को षडक्षरी लोकेश्वर एक अध्ययन” विषयमा विद्यावारिधी गरिदै हुनुहुन्छ )